… # नेपाल राजपत्र

श्री ५ को सरकारद्वारा प्रकाशित

खण्ड ३७) काठमाडौं, वैशाख १ गते २०४४ साल (अतिरिक्ताङ्क १

## भाग २

श्री ५ को सरकार

### कानून तथा न्याय मन्त्रालय

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवबाट संविधानको धारा २१ अनुसार बनाई जारी गरिबक्सेको तल लेखिएबमोजिमको ऐन सर्वसाधारणको जानकारीको लागि प्रकाशित गरिएको छ ।

२०४४ सालको ऐन नं. १

स्वस्तिश्री गिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविध विरुदावली विराजमान मानोन्नत महेन्द्रमाला परम नेपालप्रतापभास्कर ओजस्विराजन्य परम गौरवमय तेजस्वी त्रिभुवनप्रजातन्त्रश्रीपद परम उज्ज्वल कीर्तिमय नेपालश्रीपद परम प्रोज्ज्वल नेपालतारा परम पवित्र ॐरामपट्ट परम ज्योतिर्मय सुविख्यात त्रिशक्तिपट्ट परम सुप्रसिद्ध प्रबल गोरखादक्षिणबाहु परमाधिपति अतिरथी परम सेनाधिपति श्री श्री श्री श्री श्रीमन्महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेव देवानाम् सदा समरविजयिनाम् ।

### राजगद्दी उत्तराधिकारसम्बन्धी व्यवस्था गर्न बनेको ऐन

प्रस्तावना : श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहदेवबाट सार्वभौमसत्ता सम्पन्न स्वतन्त्र एवं सुसंगठित नेपाल अधिराज्य कायम गरिबक्सेपछि नेपालको राजगद्दीमा मौसूफ र मौसूफका

उत्तराधिकारी राजहोइबक्सेको र राजगद्दीको उत्तराधिकार क्रम श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहदेवका वंशजमा दशौं वंशज श्री ५ महाराजाधिराज महेन्द्र वीर विक्रम शाहदेवका आर्य संस्कृतिका अनुयायी हिन्दू धर्मावलम्बी वंशजमा चलिआएको राजगद्दी उत्तराधिकारसम्बन्धी रीत, परम्परा र कानूनलाई मन्त्रिपरिषद् तथा राजसभाको परामर्श अनुसार अझ बढी स्पष्ट गर्न वान्छनीय भएकोले,

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवबाट नेपालको संविधानको धारा २१ अनुसार यो ऐन बनाई जारी गरिबक्सेको छ ।

## प्रारम्भिक

१. संक्षिप्त नाम र प्रारम्भ :

१.१ यस ऐनको नाम "राजगद्दी उत्तराधिकारसम्बन्धी ऐन, २०४४" रहेको छ ।

१.२ यो ऐन तुरुन्त प्रारम्भ हुनेछ ।

२. परिभाषा : विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस ऐनमा–

२.१ "श्री ५" भन्नाले श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहदेवका वंशज आर्य संस्कृतिका अनुयायी हिन्दू धर्मावलम्बी गद्दीनसीन श्री ५ महाराजाधिराजलाई सम्झनुपर्दछ ।

२.२ "राजगद्दी" भन्नाले सार्वभौमसत्ता सम्पन्न स्वतन्त्र नेपाल अधिराज्यको राजगद्दी सम्झनुपर्दछ ।

२.३ "शाहवंश" भन्नाले सम्वत् १८२५ देखि नेपालको राजगद्दीमा राजहोइबक्सेको आर्य संस्कृतिका अनुयायी हिन्दू धर्मावलम्बी श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहदेवको वंश सम्झनुपर्दछ ।

२.४ "छोरा" भन्नाले रीतपूर्वक विवाहिता धर्मपत्नी, पटबन्धा श्री ५ बडामहारानीबाट पैदा होइबक्सेको छोरालाई सम्झनुपर्दछ र भाइ र वंशज भन्ने शब्दहरूको पनि सोहीबमोजिम अर्थ लगाइनेछ ।

## शक्तिको स्रोत र राजगद्दीको हक

३. शक्ति तथा अधिकारको स्रोत : सार्वभौमसत्ता सम्पन्न स्वतन्त्र नेपाल अधिराज्यको पवित्र राजगद्दीमा राजहोइबक्सेका श्री ५ सार्वभौमसत्ता सम्पन्न, सर्वशक्तिमान तथा सर्वशक्ति एवं अधिकारका एक मात्र स्रोत होइबक्सनेछ ।

४. राजगद्दीमा हक : यस ऐनमा भएको व्यवस्थाका अधीनमा रही शाहवंशको मात्र राजगद्दीमा हक हुनेछ ।

## उत्तराधिकारी क्रम तथा धर्मपुत्र

५. राजगद्दी उत्तराधिकारी हक तथा क्रम : शाहवंशको राजगद्दी उत्तराधिकारीको हक तथा क्रम देहायबमोजिम हुनेछ :–

५.१ श्री ५ पछि राजगद्दी उत्तराधिकारी मौसूफका जेठा छोरा श्री ५ युवराजाधिराज होइबक्सनेछ । श्री ५ युवराजाधिराज राजगद्दीमा विराजमान होइबक्सेन भने पनि मौसूफका जेठा छोरा श्री ५ नवयुवराज होइबक्सन्छ भने श्री ५ का अन्य छोरा होइबक्से पनि श्री ५ नवयुवराज नै राजगद्दी उत्तराधिकारी होइबक्सनेछ । एवं रीत छोरा छोरामा जेठा जेठाको राजगद्दी उत्तराधिकारी होइबक्सने प्रथम हक हुनेछ ।

५.२ श्री ५ युवराजाधिराजको देहावसान राजगद्दीमा राजनहोइबक्सँदै भयो र मौसूफका छोरा श्री ५ नवयुवराज होइबक्सेन भने श्री ५ का अन्य छोरामा जेठा राजगद्दी उत्तराधिकारी होइबक्सने क्रम हुनेछ । यसरी मौसूफ उत्तराधिकारी होइबक्सेपछि दफा ५.१ को क्रम मौसूफका छोरामा लागू हुनेछ ।

५.३ श्री ५ का राजगद्दी उत्तराधिकारी जेठा छोरा श्री ५ युवराजाधिराज होइबक्सँदै उत्तराधिकारी नभएका अन्य कुनै छोराको देहावसान भयो र त्यसरी देहावसान हुने मौसूफको छोरा होइबक्सन्छ र सो अवस्थामा रागजद्दी उत्तराधिकारी श्री ५ युवराजाधिराजको पनि देहावसान भयो र मौसूफका छोरा छैनन् भने अगावै देहावसान हुने अरू छोराको छोरा भए पनि राजगद्दीको उत्तराधिकारी श्री ५ का छोरा नै होइबक्सनेछ ।

५.४ श्री ५ का राजगद्दी उत्तराधिकारी जेठा छोरा छँदै देहावसान भइबक्सेको अन्य छोराका छोरा पैदा होइबक्सेको छ र त्यसपछि छोरा नहुँदै जेठा छोरा तथा अन्य छोरा समेतको देहावसान भयो भने अन्य छोराका छोरामा सबैभन्दा जेठा छोरा राजगद्दी उत्तराधिकारी होइबक्सनेछ र यही रीत र क्रम त्यसपछिको पिंडीमा पनि लागू हुनेछ ।

५.५. श्री ५ का छोरा वा छोरापट्टिका नाति पनाति नभए मौसूफका भाइ, भाइ पनि नभए भाइका छोरा, भाइका छोरा पनि नभए भाइका छोराका छोरा (नाति) र नाति पनि नभए पनाति राजगद्दी उत्तराधिकारी होइबक्सनेछ ।

५.६ दफा ५.१, ५.२, ५.३, ५.४ र ५.५ मा लेखिएबमोजिम कोही नभएमा शाहवंशभित्रका सबैभन्दा नजिकका अन्य हकदारमध्येबाट जेष्ठताको आधारमा राजगद्दी उत्तराधिकारी होइबक्सनेछ ।

५.७ श्री ५ का भाइ वा भाइका छोरा वा नाति वा पनाति वा अन्य हकदार राजगद्दी उत्तराधिकारी होइबक्सेमा भाइ वा भाइका छोरा वा नाति वा पनाति वा अन्य हकदारमा पनि समान समानमा जेठा नै प्रथम हकदार होइबक्सनेछ ।

५.८ श्री ५ का छोरा नहुँदै राजगद्दी रिक्त हुन गई मौसूफका भाइ वा भाइका छोरा

वा नाति वा पनाति वा अन्य हकदार राजगद्दीमा विराजमान होइबक्सने अवस्था परी आएमा राजगद्दी रिक्त छाडिबक्सने श्री ५ का श्री ५ बडामहारानी राजगद्दीमा राजहोइबक्सनेछ । श्री ५ का श्री ५ बडामहारानीले गर्भधारण गरिबक्सेको छ वा छैन भन्ने निर्णय दुई महिनामा गरिनेछ । श्री ५ बडामहारानी राजगद्दीमा राज होइबक्सेको दुई महिनामा गर्भधारण गरिबक्सेको रहेछ भन्ने निर्णय भए मात्र मौसूफको गर्भबाट छोरा पैदा नभैबक्सेसम्म राजगद्दीमा राज-होइबक्सनेछ । मौसूफ श्री ५ बडामहारानीका गर्भबाट छोरा पैदा भैबक्सेमा मौसूफ छोरा नै राजगद्दीमा विराजमान होइबक्सनेछ ।

तर–

५.८.१ त्यसरी श्री ५ का श्री ५ बडामहारानी राजगद्दीमा राजहोइबक्सेको अवस्थामा र छोरा पैदा होइबक्सी मौसूफ राजगद्दीमा विराजमान गरिबक्सेमा समेत मौसूफ अठार वर्ष पूरा नगरिबक्सेसम्म नेपालको संविधान, २०१९ को धारा २३ को उप-धारा (६) र (७) बमोजिम श्री ५ बाट बनाइबक्सेको नियमको अधीनमा रही सो अनुसारको राज्यसहायक परिषद्को घोषणा राजसभाको स्थायी समितिको बैठकले निर्णय गरी राजसभाको सभापतिले गर्नेछ ।

५.८.२. दफा ५.८.१ अनुसारको राज्यसहायक परिषद् दफा ५.८ को अवस्थामा छोरा पैदा नहोइबक्सेमा वा पैदा होइबक्सी मौसूफ अठार वर्ष पुगिबक्सेमा उक्त परिषद् स्वतः कायम रहनेछैन ।

५.९ श्री ५ का राजगद्दी उत्तराधिकारी छोरा श्री ५ युवराजाधिराजको देहावसान मौसूफका उत्तराधिकारी छोरा पैदा नहुँदै भयो वा मौसूफ उत्तराधिकारी हकबाट बन्चित होइबक्स्यो र मौसूफका विवाहिता धर्मपत्नी श्री ५ युवराज्ञी होइबक्सिन्छ भने मौसूफले गर्भधारण गरिबक्सेको छ छैन भन्ने निर्णय भइनसकी अर्को व्यक्ति उत्तराधिकारी मानिनेछैन । उत्तराधिकारीका धर्मपत्नी श्री ५ युवराज्ञीबाट, उत्तराधिकारी देहावसान भएका वा उत्तराधिकारी हकबाट बन्चित भएका दश महिनाभित्र छोरा पैदा होइबक्सेमा गद्दीनसीन श्री ५ का अरू छोरा भए पनि राजगद्दी उत्तराधिकारीको हक उत्तराधिकारीको पछि पैदा होइबक्सेका छोरा कै हुनेछ ।

५.१० श्री ५ का राजगद्दी उत्तराधिकारी छोरा श्री ५ युवराजाधिराजको देहावसान मौसूफको उत्तराधिकारी छोरा पैदा नहुँदै भयो वा मौसूफ राजगद्दी उत्तराधिकारी हकबाट वन्चित होइबक्स्यो र सो भएको दश महिना नपुग्दै राजगद्दी रिक्त हुन आयो भने उत्तराधिकारीका धर्मपत्नी श्री ५ युवराज्ञीबाट गर्भधारण गरिबक्सेको छ छैन भन्ने निर्णय नभएसम्म राजगद्दी रिक्त छाडिबक्सने श्री ५ का

अन्य छोरा वा अन्य छोराका छोरा भए पनि राजगद्दी रिक्त गरिबक्सने श्री ५ का श्री ५ बडामहारानी राजगद्दीमा राजहोइबक्सनेछ । त्यस्तो अवस्थामा राजगद्दी रिक्त गरिबक्सने श्री ५ का श्री ५ बडामहारानी नहोइबक्सेमा उत्तराधिकारी श्री ५ युवराजाधिराजका धर्मपत्नी श्री ५ युवराज्ञी राजगद्दीमा राजहोइबक्सनेछ । श्री ५ युवराज्ञीले गर्भधारण गरिबक्सेको छ वा छैन भन्ने निर्णय दुई महिनामा गरिनेछ । श्री ५ युवराज्ञी राजगद्दीमा राजहोइबक्सेको दुई महिनामा गर्भधारण गरिबक्सेको रहेछ भन्ने निर्णय भए मात्र मौसूफको गर्भबाट छोरा पैदा नभैबक्सेसम्म राजगद्दीमा राजहोइबक्सनेछ । मौसूफका गर्भबाट छोरा पैदा भैबक्सेमा त्यसरी पैदा भैबक्सेका उत्तराधिकारीका छोरा नै राजगद्दीमा विराजमान भई गद्दीनसीन श्री ५ होइबक्सनेछ ।

तर–

५.१०.१ त्यसरी श्री ५ बडामहारानी वा श्री ५ का उत्तराधिकारी श्री ५ युवराजाधिराजका धर्मपत्नी श्री ५ युवराज्ञी राजगद्दीमा राजहोइबक्सेको अवस्थामा र छोरा पैदा होइबक्सी राजगद्दीमा विराजमान गरिबक्सेमा मौसूफ अठार वर्ष पूरा नगरिबक्सेसम्म नेपालको संविधान, २०१९ को धारा २३ को उप-धारा (६) र (७) बमोजिम श्री ५ बाट बनाइबक्सेको नियमको अधीनमा रही सो अनुसार राज्यसहायक परिषद्को घोषणा राजसभाको स्थायी समितिको बैठकले निर्णय गरी राजसभाको सभापतिले गर्नेछ ।

५.१०.२ दफा ५.१०.१ अनुसारको राज्यसहायक परिषद छोरा पैदा नहोइबक्सेमा वा पैदा होइबक्सी मौसूफ अठार वर्ष पुगिबक्सेमा उक्त परिषद स्वतः कायम रहनेछैन ।

६. धर्मपुत्रः

६.१ श्री ५ का छोरा नभई धर्मपुत्र राख्ने इच्छा गरिबक्सेमा सामान्यतया मौसूफ पछि राजगद्दीमा राज हुन हक पुग्ने सबैभन्दा नजिकको हकदारलाई मौसूफबाट चाहिबक्सेमा राजसभासँग परामर्श गरिबक्सी धर्मपुत्र राखिबक्सनेछ ।

६.२ तर नाताको हैसियतले मान्नु पर्ने आफूभन्दा अघिल्लो पिंडीको व्यक्ति धर्मपुत्र हुने छैन र धर्मपुत्र हुने भन्दा नजिकको अर्को हकदार भएको अवस्थामा धर्मपुत्र भएको नाताले मात्र राजगद्दीमा हक पुग्नेछैन ।

६.३ श्री ५ बाट धर्मपुत्र राखिबक्सेपछि मौसूफका श्री ५ बडामहारानीबाट छोरा पैदा होइबक्स्यो भने राजगद्दी उत्तराधिकारी हक छोरा कै हुनेछ ।

६.४ दफा ६.१ र ६.२ को रीतबमोजिम धर्मपुत्र हुनेलाई सोही दफा ६.१, ६.२ र ६.३ को अधीनमा रही श्री ५ का छोरा सरह हक प्राप्त हुनेछ र श्री ५ बाट चाहिबक्सेमा मौसूफबाट हुकुम बक्सेबमोजिम सम्बोधन गरिनेछ ।

## राजगद्दीमा राजहुन नहुने र उत्तराधिकारीबाट बन्चित हुने अवस्था

७. राजगद्दीमा राजहुन नहुने अवस्थाः देहायका अवस्थामा श्री ५ राजगद्दीमा राजहोइबक्सने छैनः–

७.१ मौसूफबाट हिन्दू धर्म परित्याग गरिबक्सेमा; वा

७.२ मौसूफबाट कुनै विदेशी राष्ट्रको मानार्थ बाहेक अरू प्रकारको नागरिकता ग्रहण गरिबक्सेमा ।

८. उत्तराधिकारी हक र क्रमबाट बन्चित हुने अवस्थाः

८.१ कुनै वंशजका सम्बन्धमा देहायबमोजिम भएको छ भन्ने कुरा श्री ५ मा लागेमा मौसूफबाट चाहिबक्सेमा राजसभासँग परामर्श गरिबक्सी त्यस्तो वंशजलाई राजगद्दीको उत्तराधिकारीको हक र क्रमबाट बन्चित गर्न सकिबक्सनेछः–

८.१.१ हिन्दू धर्म परित्याग गरी अन्य धर्म ग्रहण गरेमा;

८.१.२ कुनै विदेशी राष्ट्रको मानार्थ नागरिकता श्री ५ को पूर्व स्वीकृतिले ग्रहण गरेमा बाहेक अरू प्रकारको नागरिकता ग्रहण गरेमा; वा

८.१.३ राष्ट्र र राजगद्दीको हित तथा राजपरिवारको रीत र परम्परा विपरित विवाह वा अन्य कार्य गरेमा ।

८.२ श्री ५ बाट दफा ८.१ बमोजिम अधिकार प्रयोग गरिबक्सँदा लालमोहरद्वारा शाही आदेश जारी गरिबक्सनेछ र सो आदेश जारी भए पछि त्यस्तो वंशज राजगद्दीको उत्तराधिकारीको हक र क्रमबाट बन्चित भएको मानिनेछ ।

८.३ दफा ८.२ बमोजिम जारी हुने आदेश नेपाल राजपत्रमा प्रकाशित हुनेछ ।

८.४ दफा ८.२ बमोजिम श्री ५ बाट जारी गरिबक्सने आदेश मौसूफबाट बाहेक अरू प्रकारले खारेज वा हेरफेर गर्न सकिनेछैन ।

## विविध

९. शुभ-राज्याभिषेक, पर्व तथा उत्सवः श्री ५ को शुभ-राज्याभिषेक, पर्व तथा उत्सवहरू आर्य संस्कृति, हिन्दू धर्म तथा शाही परम्परा अनुसार सुसम्पन्न हुनेछ ।

१०. श्री ५ बडामहारानी, श्री ५ युवराजाधिराज तथा श्री ५ नवयुवराज घोषित गर्नेः

१०.१ श्री ५ बाट राज्यारोहण गरिबक्सेपछि मौसूफको विवाहिता धर्मपत्नीलाई श्री ५ बडामहारानी भनी घोषणा गरिबक्सनेछ ।





६०

१०.२ श्री ५ बाट अन्यथा विचार गरिबक्सेमा बाहेक मौसूफ पछि राजगद्दीमा उत्तराधिकारी कायम हुन आएको वंशजलाई श्री ५ बाट श्री ५ युवराजाधिराज भनी घोषणा गरिबक्सनेछ ।

१०.३ श्री ५ बाट अन्यथा विचार गरिबक्सेमा बाहेक श्री ५ युवराजाधिराज पछि उत्तराधिकारी कायम हुन आएको वंशजलाई श्री ५ बाट श्री ५ नवयुवराज भनी घोषणा गरिबक्सनेछ ।

११. राजपरिवारः

११.१ समय-समयमा नेपाल अधिराज्यको राजगद्दीमा राजहोइबक्सेको श्री ५ महाराजाधिराज मौसूफका विवाहिता धर्मपत्नी पटवन्धा श्री ५ बडामहारानी र मौसूफपट्टिका जेठा छोरा राजगद्दी उत्तराधिकारी श्री ५ युवराजाधिराजका सन्तानमा तीन पुस्ताको बन्देज लाग्नेछैन। जति पुस्ता भएपनि राजपरिवार नै रहिबक्सनेछ ।

११.२ समय-समयमा नेपाल अधिराज्यको राजगद्दीमा राजहोइबक्सेको श्री ५ महाराजाधिराज मौसूफका विवाहिता धर्मपत्नी पटवन्धा श्री ५ बडामहारानी र मौसूफपट्टिका छोरा छोरी र सो छोरातर्फका सन्तानमा तीन पुस्तासम्मका सदस्य र मौसूफ सदस्यहरूका विवाहिता धर्मपत्नीहरूलाई समेत राजपरिवार मानिनेछ । पुस्ता गणना गर्दा श्री ५ सहित तीन पुस्ता गणना गरिनेछ ।

११.३ दफा ११.१ का राजपरिवारका सदस्यलाई श्री ५ बाट राजपरिवारको मर्यादा, परम्परा र रीतबमोजिम राजपरिवारको सदस्यको हैसियतले प्रयोग गर्न पाउने शाही उपाधि बक्सन सकिबक्सनेछ ।

११.४ श्री ५ बाट राजपरिवारका सदस्यहरूलाई राजपरिवारका मर्यादा, परम्परा र रीत बमोजिम राजपरिवारका सदस्यको हैसियतले प्रयोग गर्न पाउने शाही उपाधि बक्सन सकिबक्सनेछ ।

१२. राजपरिवारको सदस्यताको पदबाट निष्काशन हुने वा अन्य सहुलियतहरू रोकिने अवस्थाः राजपरिवारका सदस्यले पालना गर्नु पर्ने गरी समय समयमा विशेषतः वा साधारणतः श्री ५ बाट बनाइबक्सेको नियममा तोकिएको आचरणहरू पालना नगरेको वा खराव आचरण हुन गएको छ भन्ने श्री ५ मा लागेमा मौसूफबाट समय समयमा बनाइबक्सेको नियममा व्यवस्था भएको समितिको रायमा राजसभाको परामर्श लिइबक्सी श्री ५ बाट निजलाई राजपरिवारको सदस्यताबाट निष्काशन गर्न सकिबक्सनेछ वा अन्य सहुलियतहरू रोकिबक्सन सकिबक्सनेछ ।

१३. अपराध तथा सजायः कसैले श्री ५ को गाथ वा राजगद्दी वा दुवै ताकेमा वा सो गर्न उद्योग वा षडयन्त्र वा चेष्टा गरेमा वा यस ऐनबमोजिम निर्धारित राजगद्दी उत्तराधिकारीको हक र क्रममा श्री ५ बाट अन्यथा व्यवस्था गरिबक्सेमा बाहेक खलल पारेमा निजलाई राजपरिवारको सदस्य भए राजसभाको परामर्शमा श्री ५ बाट हुकुम बक्सेबमोजिम कारवाही तथा दण्ड सजाय र अन्य व्यक्ति भए अपराधको प्रकृति तथा गाम्भिर्यता हेरी दश वर्ष कैद, जन्म कैद, सर्वस्व सहित जन्म कैद वा मृत्यु दण्ड हुनेछ ।

१४. मुद्दा सरकार वादी भै हेरिने:

१४.१ राजपरिवारको सदस्य बाहेक अरु कसैले दफा १३ बमोजिमको अपराध गरेमा सो मुद्दा श्री ५ को सरकार वादी भै कारवाही चलाइनेछ ।

१४.२ दफा १४.१ बमोजिम चलाइएको मुद्दा सर्वोच्च अदालतमा दायर हुनेछ र त्यस्तो मुद्दामा कारवाही किनारा गर्ने अधिकार सर्वोच्च अदालतको पूर्ण इजलासलाई हुनेछ ।

१४.३ दफा १४.२ बमोजिमको मुद्दाको कारवाही राजसभाको परामर्शमा खुल्ला वा बन्द इजलासमा हुनेछ ।

१५. अदालतमा प्रश्न उठाउन नसकिने: यो ऐनबमोजिम श्री ५ बाट भए गरेको कुनै काम कारवाहीमा कुनै अदालतमा प्रश्न उठाउन सकिनेछैन ।

१६. परम्परा र रीतबमोजिम हुने: राजगद्दी तथा राजगद्दी उत्तराधिकारीको सम्बन्धमा यस ऐनमा लेखिएको कुरा जतिमा सोहीबमोजिम र सो बाहेक अन्य कुरामा शाहवंशमा चलिआएको वंशानुक्रम परम्परा तथा रीतबमोजिम नै हुनेछ ।

१७. बाधा अडकाउ फुकाउने अधिकार: यो ऐन कार्यान्वयन गर्दा कुनै बाधा अडकाउ आई परेमा श्री ५ बाट राजसभाको परामर्शमा आवश्यक आदेश जारी गर्न सकिबक्सनेछ र त्यस्तो प्रत्येक आदेश यसै ऐनमा परे सरह मानिनेछ ।

१८. खारेजी: राजगद्दी उत्तराधिकारसम्बन्धी ऐन, २०१५ खारेज गरिएको छ ।

लालमोहर सदर मिति:– २०४४।१।१।३

आज्ञाले,
ध्रुववरसिंह थापा
श्री ५ को सरकारको सचिव



श्री ५ को सरकारको छापाखाना, सिंहदरबार, काठमाडौंमा मुद्रित ।